**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

**॥ अथ आङ्गिरसस्मृतिः ॥**

**॥ अथादौ प्रायश्चित्तविधानवर्णम् ॥**

**गृहाश्रमेषु धर्मेषु वर्णानामनुपूर्वशः ।**
**प्रायश्चित्तविधिं दृष्ट्वा अङ्गिरा मुनिरब्रवीत् ॥१॥**

चारै वर्णका गृहस्थाश्रम आदि धर्मका सम्बन्धमा पूर्व निर्धारित प्रायश्चितका विधिको आलोकमा अङ्गिरा मुनिले भन्नु भयो ।

**अन्त्यानामपि सिद्धान्नं भक्षयित्वा द्विजातयः ।**
**चान्द्रं कृच्छ्रं तदर्द्धन्तु ब्रह्मक्षत्रविशां विदुः ॥२॥**

अन्त्यजले पकाएको अन्न खाएपछि द्विज अर्थात ब्राह्मण, क्षत्रिय र वैश्यले चान्द्रायण, कृच्छ्र वा कृच्छ्रार्द्ध गर्नू ।

**रजकश्चर्मकारश्च नटो वुरुड एव च ।**
**कैवर्त्तमेदभिल्लाश्च सप्तैते चान्त्यजाः स्मृताः ॥३॥**

धोबी, चमार, नट, बुरुड, कैवर्त, मेद र भिल्ल : यी सात अन्त्यज मानिएका छन् ।

**अन्त्यजानां गृहे तोयं भाण्डे पर्य्युषितञ्च यत् ।**
**प्रायश्चित्तं यदा पीतं तदैव हि समाचरेत् ॥४॥**

अन्त्यजका घरको पानी वा तिनको भाँडाको बासी पानी पिएमा द्विजले शास्त्र अनुसारको प्रायश्चित गर्नू ।

**चाण्डालकूपभाण्डेषु त्वज्ञानात् पिबते यदि ।**
**प्रायश्चित्तं कथं तेषां वेर्षे वर्णे विधीयते ॥५॥**

अन्त्यजका कुवाको भाँडाको पानी अनजानमा पिउनेहरुले वर्ण अनुसार के प्रायश्चित गर्नु पर्दछ ? त्यो बताइन्छ ।

**चरेत् सान्तपनं विप्रः प्राजापत्यन्तु भूमिपः ।**

**तदर्द्धन्तु चरेद्वैश्यः पादं शूद्रेषू दापयेत् ॥६॥**

ब्राह्मणले सान्तपन, क्षत्रियले प्राजापत्य, वैश्यले अर्द्ध-प्राजापत्य र शूद्रले पाद-प्राजापत्य गरी प्रायश्चित गर्नू ।

**अज्ञानात् पिबते तोयं ब्राह्मणस्त्वन्तयजातिषु ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥७॥**

ब्राह्मणले अनजानमा अन्त्यजको पानीपिए एक दिन उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**विप्रो विप्रेण संस्पृष्ट उच्छिष्टेन कदाचन ।**
**आचान्त एव शुध्येत अङ्गिरा मुनिरब्रवीत् ॥८॥**

कुनै जुठो मुखको ब्राह्मणले ब्राह्मणलाई संयोगले छोएमा आचमन गर्नु शुद्ध हुन्छ भनी अङ्गिराले बताएका छन् ।

**क्षत्त्रियेण यदा स्पृष्ट उच्छिष्टेन कदाचन ।**
**स्नानं जप्यन्तु कुर्वीत दिनस्यार्द्धेन शुध्यति ॥९॥**

कुनै जुठो मुखको क्षत्रियले ब्राह्मणलाई छोएमा नुहाएर आधा दिन जप गर्नाले शुद्ध हुन्छ ।

**वैश्येन तु यदा स्पृष्टः शुना शूद्रेण वा द्विजः ।**
**उपोष्य रजनीमेकां पञ्चगव्येन शुध्यति ॥१०॥**

कुनै जुठो मुखका वैश्यले, कुकुरले र शुद्रले ब्राह्मणलाई छोएमा ब्राह्मणले एक दिनरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**अनुच्छिष्टेन संस्पृष्टौ स्नानं येन विधीयते ।**
**तेनैवोच्छिष्टसंस्पृष्टः प्राजापत्यं समाचरेत् ॥११॥**

जुठो मुख नभएकालाई छुँदा शुद्धिका लागि स्नानको विधान र जुठो मुख भएकालाई छुँदा शुद्धिका लागि प्राजापत्य व्रतको विधान छ ।

**अत उर्द्ध्वं प्रवक्ष्यामि नीली वस्त्रस्य वै विधिम् ।**
**स्त्रीणां क्रीडार्थसंयोगे शयनीये न दुष्यति ॥१२॥**

अब म नीलो कपडाको विधिको बारेमा भन्छु । स्त्री-क्रिडा र सम्भोगमा ओछ्यानको नीलो कपडा दुषित हुँदैन ।

**पालने विक्रये चैव तद्वृत्तेरूपजीवने ।**
**पतितस्तु भवेद्विप्रस्त्रिभिः कृच्छ्रैर्व्यपोहति ॥१३॥**

नीरका विरुवा रोपे, हुर्काए वा नीरको व्यापारले ब्राह्मण पतित हुन्छ र तीन पटक कृच्छ्र व्रत बसी पापबाट शुद्ध हुन्छ ।

**स्नानं दानं जपो होमः स्वाध्यायः पितृतर्पणम् ।**
**वृथा तस्य महायज्ञा नीलीवस्त्रस्य धारणात् ॥१४॥**

नीलो लुगा लगाई गरिने स्नान, दान, जप, होम, वेदाध्ययन, पितृतर्पण र महायज्ञ वेकार हुन्छ ।

**नीलीरक्तं यदा वस्त्रमज्ञानेन तु धारयेत् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥१५॥**

नीरले रङ्गाइएको लुगा अनजानमा लगाउनेले एक दिनरात व्रत बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**नीलीदारु यदा भिन्द्याद् ब्राह्मणं वै प्रमादतः ।**
**शोणितं दृश्यते यत्र द्विजश्चान्द्रायणञ्चरेत् ॥१६॥**

नीरको दाउराले बाहुनको शरीरमा प्रमादवश घाउ भए वा रगत बगे पनि बाहुनले चान्द्रायण व्रत गर्नू ।

**नीलवृक्षेण पक्वन्तु अन्नमश्नाति चेद् द्विजः ।**
**आहारं वमनं कृत्वा पञ्चगव्येन शुध्यति ॥१७॥**

जो द्विज नीरको दाउराले पकाएको अन्न खान्छ, उसले त्यो खाएको अन्न छादोस् र पञ्चगव्य खाओस्, शुद्ध हुन्छ ।

**भक्षन् प्रमादतो नीलीं द्विजातिस्त्व समाहितः ।**
**त्रिषु वर्णेषु सामान्यं चान्द्रायणमिति स्थितम् ॥१८॥**

जानेर, भूलले वा असावधान भई द्विजले नीर खाए, त्यसबाट हुने दोष हटाउनका लागि प्रायश्चितस्वरुप चान्द्रायण व्रत बस्नु पर्दछ ।

**नीलीरक्तेन वस्त्रेण यदन्नमुपनीयते ।**
**नोपतिष्ठति दातारं भोक्ता भुङ्क्ते तु किल्विषम् ॥१९॥**

नीलो लुगा लगाई अरुलाई खाना पस्किनेले खुवाएको फल पाउँदैन, खुवाउने र खाने दुबै पापका भागी हुन्छन् ।

**नीलीरक्तेन वस्त्रेण यत्पाके श्रपितं भवेत् ।**
**तेन भुक्तेन विप्राणां दिनमेकमभोजनम् ॥२०॥**

नीलो रङको लुगा लगाएर पकाएको खाना जुन बाहुनले खान्छ, त्यसले एक दिन भोजन नगरी बस्नू ।

**मृते भर्त्तरि या नारी नीलीवस्त्रं प्रधारयेत् ।**
**भर्त्ता तु नरकं याति सा नारी तदनन्तरम् ॥२१॥**

पतिको मरण पछि नीलो कपडा लगाउने विधवा स्त्रीको पति नरकमा जान्छ र त्यो स्त्रीले पनि मृत्यु पछि नरक पाउँदछे ।

**नील्या चोपहते क्षेत्रे शस्यं यत्तु प्ररोहति ।**
**अभोज्यं तद् द्विजातीनां भुक्त्वा चान्द्रायणं चरेत् ॥२२॥**

नीर खेती गरिएको जमिनमा खेती गरिएको अन्न द्विजातिले नखानू, खाए चान्द्रायण व्रत गर्नू ।

**देवद्रोण्यां वृषोत्सर्गे यज्ञे दाने तथैव च ।**
**अत्र स्नानं न कर्त्तव्यं दूषिता च वसुन्धरा ॥२३॥**

तीर्थमा, वृषोत्सर्गमा, यज्ञमा तथा दान आदि कर्ममा नीलो लुगा लगाएर ननुहाउनू किनकि यसो गर्दा पृथ्वी दुषित हुन्छिन् ।

**वापिता यत्र नीली स्यात्तावद् भूम्यंशुचिर्भवेत् ।**
**यावद् द्वादश वर्षाणि अत ऊर्द्ध्वं शुचिर्भवेत् ॥२४॥**

जुन खेतमा नीरको खेती गरिएको छ, त्यो खेत बाह्र वर्षसम्म दूषित हुन्छ र त्यसपछि मात्र शुद्ध हुन्छ ।

**भोजने चैव पाने च तथा चौषधभेषजैः ।**
**एवं म्रियन्ते या गावः पादमेकं समाचरेत् ॥२५॥**

खुवाउँदा, पियाउँदा वा औषधी दिँदा गाई मरेमा गोहत्याको चौथाई प्रायश्चित गर्नू ।

**घण्टाभरणदोषेण यत्र गौर्विनिपीड्यते ।**
**चरेदर्द्धं व्रतं तेषां भूषणार्थं हि तत् कृतम् ॥२६॥**

घाँटीमा घण्टी बाँधेको कारणले जहाँ गाई मर्दछ, त्यसको आधा व्रत गर्नू, किनकि सजाउनका लागि नै घण्टी बाँधिएको हुन्छ ।

**दमने दामने रोधे अवघाते च वैकृते ।**
**गवा प्रभवता घातैः पादोनं व्रतमाचरेत् ॥२७॥**

दमन गर्दा, दमन गराउँदा, रोक्दा, पिट्दा वा बियाउँदा  गाई मर्न गए चौथाई प्रायश्चित गर्नू ।

**अङ्गुष्ठपर्वमात्रस्तु बाहुमात्रः प्रमाणतः ।**
**सपल्लवश्च साग्रश्च दण्डइत्यधिधीयते ॥२८॥**

बूढी औंला जती मोटो गाँठा, दुई हात लामो र टुप्पोमा पात भएको लौरोलाई दण्ड भनिन्छ ।

**दण्डादुक्ताद्यदान्येन पुरुषाः प्रहरन्ति गाम् ।**
**द्विगुणं गोव्रतं तेषां प्रायश्चित्तं विशोधनम् ॥२९॥**

तोकिएको वा अरु कुनै प्रकारको लौरेले गाईलाई पिटेमा, पिट्ने पुरुषले प्रायश्चितका लागि दोब्बर गोव्रत गरेपछि मात्र उ शुद्ध हुन्छ ।

**श्रृङ्गभङ्गे त्वस्थिभङ्गे चर्मनिर्म्मोचने तथा ।**
**दशरात्रं चरेत् कृच्छ्रं यावत् स्वस्थो भवेत्तदा ॥३०॥**

पिट्दा गाईको सिङ वा हाडमा चोट लागे वा छाला खुइलिए पिट्नेले दश रात कृच्छ्र गर्नू वा गाईलाई ठिक नभएसम्म व्रत गर्नू ।

**गोमूत्रेण तु संमिश्रं यावकञ्चोपजायते ।**
**एतदेव हितं कृच्छ्रमिदमाङ्गिरसं मतम् ॥३१॥**

गहुँत र जौ मिलाएर बनेको कुरा खानु नै हितकर कृच्छ्र हुन्छ भनी अङ्गिराले भनेका छन् ।

**्असमर्थस्य बालस्य पिता वा यदि वा गुरुः ।**
**यमुद्दिश्य चरेद्धर्मं पापं तस्य न विद्यते ॥३२॥**

यस्तो प्रायश्चित गर्न असमर्थ बालकका लागि उसका पिता वा बाबुले प्रायश्चित गरिदिए बालकलाई दोष लाग्दैन ।

**अशीतिर्यस्य वर्षाणि बालो वाप्यूनषोडशः ।**
**प्रायश्चित्तार्द्धमर्हन्ति स्त्रियो रोगिण एव च ॥३३॥**

असी वर्षका बूढा, सोह्र वर्ष मुनिका बालक तथा स्त्री र रोगी आधा प्रायश्चित गर्न योग्य हुन्छन् ।

**मूर्च्छिते पतिते चापि गवि यष्टिप्रहारिते ।**
**गायत्र्यष्टसहस्रन्तु प्रायश्चित्तं विशोधनम् ॥३४॥**

लठ्ठीले हानी गाई मुर्छा भए वा भुईमा ढले आठ हजार पटक गायत्री जपको प्रायश्चित गर्नाले शुद्ध हुन्छ ।

**स्नात्वा रजस्वला चैव चतुर्थेऽह्नि विशुध्यति ।**
**कुर्य्याद्रजसि निवृत्तेऽनिवृत्ते न कथञ्चन ॥३५॥**

परसरेको चौथो दिनमा नुहाए पछि स्त्री शुद्ध हुन्छे । रज आउन छोडे पछि नुहाउनू, नछोडी कहिल्यै ननुहाउनू ।

**रोगेण यद्रजः स्त्रीणामत्यर्थं हि प्रवर्त्तते ।**
**अशुच्यन्ता न तेन स्युस्तासां वैकारिकं हि तत् ॥३६॥**

रोगले योनीबाट रगत बहँदा स्त्री अशुद्ध हुन्न किनकि त्यसरी आउने रगत विकारले आएको हो प्राकृतिक होइन ।

**साध्वाचारा न तावत् स्याद्रजो यावत् प्रवर्त्तते ।**
**वृत्ते रजसि गम्या स्त्री गृहकर्मणि चैन्द्रिये ॥३७॥**

रज बहिरहेसम्म उत्तम कर्म स्त्रीले नगर्नू । रज बन्द भएपछि पुरुषसँग समागम र घरका अन्य काम गर्नू ।

**प्रथमेऽहनि चाण्डाली द्वितीये ब्रह्मघातिनी ।**
**तृतीये रजकी प्रोक्ता चतुर्थेऽहनि शुध्यति ॥३८॥**

रजस्वला स्त्री पहिलो दिन चाण्डाल्नी, दोश्रो दिन ब्रह्मघातिनी र तेश्रो दिन धोबिनी समान हुन्छे, चौथो दिन शुद्ध हुन्छे ।

**रजस्वला यदा स्पृष्टा शुना शूद्रेण चैव हि ।**
**उपोष्य रजनीमेकां पञ्चगव्येन शुध्यति ॥३९॥**

रजस्वला स्त्रीलाई कुकुर वा शूद्रले छोए एक रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छे ।

**द्वावेतावशुची स्यातां दम्पती शयनङ्गतौ ।**
**शयनादुत्थिता नारी शुचिः स्यादशुचिः पुमान् ॥४०॥**

समागम कालमा स्त्रीपुरुष दुवै अशुद्ध हुन्छन्, ओछ्यानबाट उठेपछि स्त्री शुद्ध हुन्छे तर पुरुष अशुद्ध रहिरहन्छ ।

**गण्डूषं पादशौचञ्च न कुर्य्यात् कांस्यभाजने ।**
**भस्मना शुध्यते कांस्यं ताम्रमम्लेन शुध्यति ॥४१॥**

काँसका भाँडामा कुल्ला नगर्नू र गोडा नधुनू । काँसका भाँडा खरानीले शुद्ध हुन्छ । तामाका भाँडा अमिलोले शुद्ध हुन्छ ।

**रजसा शुध्यते नारी नदी वेगेन शुध्यती ।**
**भूमौ निःक्षिप्य षण्मासमत्यन्तोपहतं शुचि ॥४२॥**

नारी रजस्वलाले शुद्ध हुन्छे । नदी वेग (बहनु) ले शुद्ध हुन्छ । धेरै प्रदुषित भाँडा छ महिना जमिनमा राखे शुद्ध हुन्छ ।

**गवाघ्रातानि कांस्यानि शूद्रोच्छिष्टानि यानि तु ।**
**भस्मना दशभिः शुद्ध्येत् काकेनोपहते तथा ॥४३॥**

गाईले सुँघेको, शूद्रले खाएको वा कागले छोएको काँसका भाँडालाई दश दिनसम्म खरानीले माझे शुद्ध हुन्छ ।

**शौचं सौवर्णरूप्याणां वायुनार्केन्दुरश्मिभिः ॥४४॥**

सुन र चाँदीका भाँडा हावा वा चन्द्रसूर्यको किरणले शुद्ध हुन्छ ।

**रेतःस्पृष्टं शवस्पृष्टमाविकञ्च न दुष्यति ।**
**अद्भिर्मृदा च तन्मात्रं प्रक्षाल्य च विशुध्यति ॥४५॥**

स्त्री-रज वा वीर्य वा शवले छोएर ऊनी कपडा अशुद्ध हुँदैन, जती भ्रष्ट वा अशुद्ध भएको छ त्यति मात्र पानी र माटोले धोए शुद्ध हुन्छ ।

**शुष्कमन्नमविप्रस्य भुक्त्वा सप्ताहमृच्छति ।**
**अन्नं व्यञ्जनसंयुक्तमर्द्धमासेन जीर्य्यति ॥४६॥**

बाहुन बाहेकको सुक्खा अन्न खाए सात दिन र व्यञ्जन मिसिएको अन्न खाए पन्ध्र दिनको उपवासले शुद्ध हुन्छ ।

**पयोदधि च मासेन षण्मासेन घृतं तथा ।**
**तैलं संवत्सरेणैव कोष्ठे जीर्य्यति वा न वा ॥४७॥**

दूधदहीले एक महिना र घिउ खाएर छ महिना उपवास बसेर तथा तेल खाएर एक वर्ष उपवास बसे पनि शुद्ध हुने/नहुने भन्न सकिन्न ।

**यो भुङ्क्ते हि च शूद्रान्नं मासमेकं निरन्तरम् ।**
**इह जन्मनि शूद्रत्वं मृतः श्वा चाभिजायते ॥४८॥**

जसले निरन्तर महिना दिनसम्म शूद्रान्न खान्छ, त्यो यस जन्ममै शूद्र हुन्छ र मरेपछि कुकुर हुन्छ ।

**शूद्रान्नं शूद्रसम्पर्कः शूद्रेण च सहासनम् ।**
**शूद्राज्ज्ञानगमः कश्चिज्ज्वलन्तमपि पातयेत् ॥४९॥**

शूद्रको अन्न, उसँगको सम्पर्क, एउटै आसनको बसाई र उसँगको विद्या प्राप्तिले प्रतापी मानिसलाई पनि पतित बनाउँछ ।

**अप्रणामे तु शुद्रेऽपि स्वस्ति यो वदति द्विजः ।**
**शूद्रोऽपि नरकं याति ब्राह्मणोऽपि तथैव च ॥५०॥**

शूद्रलाई उसले नमस्कार नगरीकनै ब्राह्मण आशिर्वाद दिन्छ भने ब्राह्मण र शूद्र दुवै नरकमा पर्दछन् ।

**दशाहाच्छुध्यते विप्रो द्वादशाहेन भूमिपः ।**
**पाक्षिकं वैश्य एवाह शूद्रो मासेन शुद्ध्यति ॥५१॥**

ब्राह्मण दश दिनमा, क्षत्रीय बाह दिनमा, त्यस्तै वैश्य पन्ध्र दिनमा र शूद्र एक महिनामा शुद्ध हुन्छ ।

**अग्निहोत्री च यो विप्रः शूद्रान्नं चैव भोजयेत् ।**
**पञ्च तस्य प्रणश्यन्ति आत्मा वेदास्त्रयोऽग्नयः ॥५२॥**

जो अग्निहोत्री ब्राह्मण अशुद्धतामा शूद्रको अन्न खान्छ उसको शरीर, वेदज्ञान र तीनै प्रकारका अग्निगरी पाँचै थोक नष्ट हुन्छ ।

**शूद्रान्नेन तु भुक्तेन यो द्विजो जनयेत्सुतान् ।**
**यस्यान्नं तस्य ते पुत्रा अन्नाच्छुक्रं प्रवर्त्तते ॥५३॥**

शूद्रको अन्न खाएर जुन द्विजले पुत्र जन्माउँछ त्यो त्यही अन्न धनी शूद्रको पुत्र मानिन्छ किनकि अन्नले नै शुक्र उत्पन्न हुन्छ ।

**शूद्रेण स्पृष्टमुच्छिष्टं प्रमादादथ पाणिना ।**
**तद्द्विजेभ्यो न दातव्यमापस्तम्बोऽब्रवीन्मुनिः ॥५४॥**

शूद्रले जानीजानी हातले छोएको जुठो अन्न द्विजलाई नदिनु भनी आपस्तम्बले भनेका छन् ।

**ब्राह्मणस्य सदा भुङ्क्ते क्षत्रियस्य च पर्वसु ।**
**वैश्येष्वापत्सु भुञ्जीत न शूद्रेऽपि कदाचन ॥५५॥**

ब्राह्मणको अन्न सदा भक्षणीय हुन्छ, क्षत्रियको अन्न पर्व आदिमा उपयोग गर्न, वैश्यको अन्न आपदमा भक्षणीय हुन्छ भने शूद्रको अन्न कहिल्यै नखानू ।

**ब्राह्मणान्ने दरिद्रत्वं क्षत्रियान्ने पशुस्तथा ।**
**वैश्यान्नेन तु शूद्रत्वं शूद्रान्ने नरकं ध्रुवम् ॥५६॥**

अन्न-ब्राह्मणको खाए व्यक्ति दरिद्री हुन्छ, क्षत्रियकोले पशु हुन्छ, वैश्यकोले शूद्र हुन्छ र शूद्रकोले नरकमा पर्दछ ।

**अमृतं ब्राह्मणस्यान्नं क्षत्त्रियान्नं पयः स्मृतम् ।**
**वैश्यस्य चान्नमेवान्नं शूद्रान्नं रुधिरं ध्रुवम् ॥५७॥**

अन्न-ब्राह्मणको अमृतसमान, क्षत्रियको दूधसमान, वैश्यको अन्नसमान र शूद्रको रगत समान हुन्छ ।

**दुष्कृतं हि मनुष्याणामन्नमाश्रित्य तिष्ठति ।**
**यो यस्यान्नं समश्नाति स तस्याश्नाति किल्बिषम् ॥५८॥**

मानिसले गरेका दुष्कर्महरु अन्नमा आश्रित हुने हुनाले अरुको अन्न खानेले उसले गरेका पाप पनि खान्छ ।

**सूतकेषू यदा विप्रो ब्रह्मचारी जितेन्द्रियः ।**
**पिबेत् पानीयमज्ञानाद् भुङ्क्ते(अन्नं) भक्तमथापि वा ॥५९॥**
**उत्तार्य्याचम्य उदकमतीर्य्य उपस्पृशेत् ।**
**एवं हि समुदाचारो वरुणेनाभिमन्त्रितः ॥६०॥**

जितेन्द्रिय ब्रह्मचारी ब्राह्मणले अनजानमा सूतक परेका परवर्णको अन्न, पानी, भात खाए त्यो वमन गरी आचमन गर्नू । जलमा ओर्लेर नुहाउनू । प्राणायाम गरी फेरी आचमन गर्नू । यसरी उत्तम विधिले वरुण मन्त्र जप्दै शरीरमा पवित्र जल छर्कनू ।

**अग्न्याहारे गवां गोष्ठे देवब्राह्मण सन्निधौ ।**

**आहारे जपकाले च पादुकानां विसर्जनम्॥६१॥**

यज्ञशालामा, गौशालामा, देवता र ब्राह्मणका समिपमा, खाँदा र जप गर्दा पादुका नलगाउनू ।

**पादुकासनमारुढोगेहात् पञ्चगृहं व्रजेत् ।**
**छेदयेत्तस्य पादौ तु धार्मिकः पृथिवीपतिः ॥६२॥**

पादुका लगाएर सामान्य गृहस्थी आफ्नो घरबाट छ घरमा गए धर्मात्मा राजाले त्यसको गोडा काट्नू ।

**अग्निहोत्री तपस्वी च श्रोत्रियो वेदपारगः ।**
**एते वै पादुकैर्य्यान्ति शेषान्दण्डेन ताडयेत्॥६३॥**

अग्निहोत्री, तपस्वी, वेद अनुसार कर्म गर्ने र वेदको मर्म जान्नेले मात्र पादुका लगाएर हिँड्नू । अरुले लगाए ती दण्डनीय हुन्छन् ।

**जन्मप्रभृतिसंस्कारे चूडान्ते भोजनं नवम् ।**
**असपिण्डे न भोक्तव्यं चूडस्यान्ते विशेषतः ॥६४॥**

जन्मआदि संस्कारमा, चूडाकर्ममा, पास्नीमा त्यसमध्ये पनि  विशेष गरी चूडाकर्ममा असपिण्डीको घरमा नखानू ।

**याचकान्नं नवश्राद्धमपि सूतकभोजनम् ।**
**नारीप्रथमगर्भेषु भुक्त्वा चान्द्रायणं चरेत्॥६५॥**

भिक्षुकको अन्न, एघारौंको अन्न, सूतक परेका घरको अन्न र स्त्रीको पहिलो गर्भाधान संस्कारको अन्न खाए चान्द्रायण व्रत गर्नू ।

**अन्यदत्ता तु या कन्या पुनरन्यस्य दीयते ।**
**तस्याश्चान्नं न भोक्तव्यं पुनर्भूः सा प्रगीयते ॥६६॥**

एउटालाई दिएर फेरी अर्कोसँग विवाह गरिएकी कन्याको अन्न पनि नखानू, किनकि यस्तीलाई पुनर्भू भनिन्छ ।

**पूर्वश्च स्रावितोयश्च गर्भोयश्चाप्यसंस्कृतः ।**
**द्वितीये गर्भसंस्कारस्तेन शुद्धिर्विधियते ॥६७॥**

पहिलो गर्भश्राव भयो र गर्नुपर्ने संस्कार पनि गरिएको छैन भने पनि दोश्रो गर्भको संस्कार गर्नाले शुद्ध हुन्छ ।

**राजाद्यैर्दशभिर्माषैर्यावत्तिष्ठति गुर्विणी ।**
**तावद्रक्षा विधातव्या पुनरन्यो विधीयते ॥६८॥**

गर्भवतीका राजमाष आदि दश महिनामा गर्भको रक्षा गर्नू,जसले गर्दा फेरी गर्भ बस्न नपाओस् ।

**भर्तृशासनमुल्लङ्घ्य या च स्त्री विप्रवर्त्तते ।**
**तस्याश्चैव न भोक्तव्यं विज्ञेया कामचारिणी ॥६९॥**

पतिको आज्ञा नमानी जथाभावी गर्ने स्त्रीको अन्न पनि नखानू । यस्ती स्त्रीलाई कामचारिणी भनी जान्नू ।

**अनपत्या तु या नारी नाश्नीयात्तद्गृहेऽपि वै ।**
**अथ भुङ्क्ते तु यो मोहात् पूयसं नरकं व्रजेत् ॥७०॥**

जो कन्या बाँझी छे तिनको घरमा पनि नखानू । थाहापाई बाँझीको अन्न खाने पूयस नरकमा पर्छ ।

**स्त्रियाधनन्तु ये मोहादुपजीवन्ति बान्धवाः ।**
**स्त्रिया यानानि वासांसि ते पापा यान्त्यधोगतिम् ॥७१॥**

स्त्रीको धन मोहमा परी जो बान्धव भोग गर्दछन्, उसका यान र वस्त्र प्रयोग गर्दछन् ती पापी अधोगतिमा जान्छन् ।

**राजान्नं हरते तेजः शूद्रान्नं ब्रह्मवर्चसम् ।**
**सूतकेषु च यो भुङ्क्ते स भुङ्क्ते पृथिवीमलम् ॥७२॥**

राजाको अन्नले तेज र शूद्रको अन्नले ब्रह्मतेज नाश गर्दछ । सूतकको अन्न खानेले पृथ्वीको मल खाए समान हुन्छ ।

॥ इत्यङ्गिरसा महर्षिणा प्रणीतं धर्मशास्त्रं समाप्तम् ॥
॥ अङ्गिरस महर्षिले बताएको धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद समाप्त भएको छ ॥



॥ समाप्ता चेयमाङ्गिरसस्मृतिः ॥
॥ आङ्गिरसस्मृति समाप्त भयो ॥



। ॐ तत्सत् ।